# सम्यक पर्व

हिरण्यवर्ण महाविहार

# Samyak Festival

Hiranyavarna Mahavihara




**लेखक**

मीन बहादुर शाक्य

# सम्यक महादान पर्व

हिरण्यवर्णमहाविहार

लेखक:

मीन बहादुर शाक्य

प्रकाशक:

काजीरत्न शाक्य

आशारत्न शाक्य

ज्ञान रत्न शाक्य

मणिरत्न शाक्य

**प्रकाशक:**

आशारत्न शाक्य

फोन: ५३३३४८

नकवहिल, थ्याका, ललितपुर

**पहिलो संस्करण: २००० प्रति**

ने.सं. ११२०

बुद्ध सं. २५४३

वि.सं. २०५६

ई.सं. २०००

**मुद्रक :**

**शाक्य अफसेट प्रेस प्रा. लि.**

**मरुहिटि, काठमाडौं**

**फोन नं. २५०५०८,**

**२५०१८५**

# समर्पित




दिवंगत पिता सिद्धिराज शाक्य (दिवंगत मिति २०२०. ८ २३.)
दिवंगत माता आशामाया शाक्य (दिवंगत मिति २०४१ १० १४)

दिवंगत पूज्य मातापिताको स्मृतिमा श्री हिरण्यवर्ण महाविहारको आयोजनामा मिति २०५६ फागुन २७ गतेको दिन ललितपुरको नागबहालमा सुसम्पन्न हुने इल्हने महासम्यक दानको दिनमा दिपङ्कर तथागत लगायत बुद्ध बोधिसत्त्व, तारा, वसुन्धरा आदिमा सभक्ति चढाएको छौं । यस पुण्यको प्रभावले सबै सत्त्व प्राणीहरुले बुद्धत्त्व प्राप्त गरुन् भनी प्रणिधान गर्दछौ ।

**छोराहरु:**

काजीरत्न शाक्य
आशारत्न शाक्य
ज्ञान रत्न शाक्य
मणिरत्न शाक्य

**छोरीहरु:**

भिमा शाक्य
शारदा शाक्य

# विषय सूची
# Contents



**English Version:**

# सम्यक पर्व

**परिचय*:**

काठमाण्डौका सवै बौद्ध पर्वहरुमध्ये सम्येक अर्थात दीपकर पर्व धेरै अर्थहरुमा अति नै अद्विनीय देखिन्छ। यस पर्वको खास विशेषता के हो भने यस पर्वमा अति नै विशाल दिपंकरका प्रतिमाहरु नागवहाल मा ल्याई प्रदर्शन गरिन्छन्। सम्येक को शाव्दिक अर्थ सवै सत्त्व प्राणीहरुको एकता हो। वुद्ध धर्मको ईतिहासमा हामीले तीन किसिमका बोधिज्ञानहरु उल्लेख भएको पाउन सक्छौं। ती हुन्: श्रावक बोधि, प्रत्येक बोधि र सम्यक संबोधि। यस सन्दर्भमा सम्यकले पूर्ण तथा सम्बोधिले बोधिज्ञानको प्रतिनिधित्व गर्छन्। यहाँ सम्यक पर्व भन्नाले पूर्ण बोधितर्फ अर्थात सम्यक सम्बोधि तर्फ लैजाने बोधिसत्त्व मार्ग बुभिन्छ। यो पर्वको सार नै दान पारमिताको अभ्यास हो। यस पर्वमा नेवारी बौद्ध परम्परा अनुसार शाक्य तथा बज्राचार्य भिक्षुहरु र विशेष गरेर दीपंकर बुद्धहरु, अवलोकितेश्वर, आर्यतारा, इत्यादिलाई दान गरिन्छ। दीपंकर बुद्धवाट भगवान शाक्यमुनि बुद्धले आफ्नो पूर्व जन्ममा बोधि व्याकरण पाउनुभएको थियो।

यसको अत्तिरिक्त, शाक्य र बज्राचार्यहरुलाई गृहस्थ भिक्षुहरु भनिने चलन छ। उनीहरुले उपाशक, उपाशिकाहरुबाट दान ग्रहण गर्छन्। प्रायस: यी दान दिने व्यक्तिहरुलाई भक्तजन पनि भनिने गर्छन्।

## दीपंकर पर्वको उत्पत्ति विषयमा पौराणिक कथा

चौधौ शताव्दीको मध्यकालीन युगताका, हिरण्यवर्ण महाविहार अर्थात स्वर्ण मन्दिर स्थापना गर्ने राजा भास्करदेव बर्माका सन्तानहरुले एउटा धार्मिक गुठी निर्माण गरे जस अनुसार जजमानहरुले दस स्थविरहरुलाई प्रतिष्ठा सम्मान गर्ने गर्थे। ती

---

*पं हेमराजका कृतिहरु इल्हने सम्यक, सम्यक महादान गुथि, र इल्हने सम्यक् इतिहास व ध्वया ज्याङ्व: मा आधारित

दस स्थविरहरु दस पारमिता प्राप्त बोधिसत्त्वहरुका निर्माणकायहरु थिए। तिनीहरुमध्ये एकजना सन्तानले ठकूरी बंशकी कन्यासित विवाह गऱ्यो। दाता अर्थात विवाह गर्ने व्यक्तिका पिता यो गुठीमा पर्थ्यो, उनले आफ्नो सम्धिलाई भोजनको लागि आमन्त्रण गरेर बडो प्रतिष्ठा तथा सम्मानपूर्वक व्यवहार गरे। यस समारोहमा ती दुई सम्धिहरुले सबै धर्म अनुष्ठानहरु तथा कर्महरु एकदम होशियारीपूर्वक पालन गरे।

एकपल्ट छोरोचाहिंलाई रात्रीभोजको लागि आफ्नो ससुरालीमा निम्तो दिइयो, त्यसवेला उसलाई गुह्य पूजाविधिको बारेमा सोधियो। अर्को पल्ट छोरोले आफ्नो ससुरालाई बोलाएर दस स्थविरहरुलाई खिर भोजन दान गरिने गुह्य पूजाविधि अनावरण गऱ्यो। ससुराले दुष्ट मति लिएर गोप्यरुपले खिरमा विष हालिदियो र त्यो खिर दस स्थविरहरुलाई चढायो। ती दस स्थविरहरुले आफ्नो भक्तपुरवासी जजमानको दुष्ट मति थाहा पाएर बिष संसोधन धारणी पाठ गरे र साधारण भोजन सरह त्यो खिर पुरै खाइदिए।

धारणी पाठ गरेको हुनाले, उनीहरुलाई विषको असरले छोएन तर आफ्नो कुकर्मको फलस्वरुप त्यो भक्तपुरको जजमानले त्यो खिर नखाएपनि विषको घातक असर भोग्नु पऱ्यो। ज्योतिषहरुलाई देखाउँदा भोजनलाई बिषयुक्त पारेको कर्मको फलले गर्दा त्यसो भएको थाहा पाइयो र त्यो तव सम्म निको हुँदैन जवसम्म ती दश स्थविरहरुसमक्ष उसले आफ्नो पाप देशना गर्दैन। विष हाल्ने व्यक्तिले तदनुसार आफ्नो पापको देशना गरे र त्यसपछि त्यहाँ उपस्थित दाता र जजमानहरुलाई ती दश स्थविरहरुले उपदेश दिए।

" हे भक्तजनहरु! यस संसारमा पाप बढ्दै छ, तिम्रो ससुराले हाम्रो कुनै पनि गल्ती बिनानै दुर्मति लिएर यस्तो जघन्य अपराध गरेर आफ्नै कर्मको फलस्वरुप यस्तो दुःख भोग्नुपऱ्यो।"

अत: उनीहरुले पापीमाथि केही जल छर्किदिए र तत्क्षणै दश स्थविरहरुको बोधिचित्तको प्रभावले उसलाई निको पारिदिए ।
आफ्नो भयंकर पापको प्रार्यश्चित गरेर त्यो पापीले माफी माग्यो र अब भविष्यमा कसैलाई दु:ख दिनेछैन भनी प्रतिज्ञा गऱ्यो ।

त्यसपछि दश स्थविरहरुले भने, " हे न्हूल विहारका ठकुरी बंशी पुरुष! अब देखि हामीहरु बारम्बार यस धर्तीमा आउन सक्दैनौ, हामीहरु ती दश स्थविर (दशपारमिता आजुहरु) का रुपमा अवश्य आउने छौ । कृपया ती आजुहरुप्रति दशपारमितायुक्त बोधिसत्त्वहरुप्रति झैं श्रद्धा र प्रतिष्ठा गर । तिमीहरुले समान लाभ तथा पुण्य प्राप्त गर्नेछौ र अन्तत परम सुख प्राप्त गर्नेछौ ।"

यति भनिसकेपछि, उनीहरु अन्तर्ध्यान भए । अतीतमा घटित यहि अनौठो घटनाको कारणले आजसम्म पनि दश आजुहरुलाई दशपारमिताका बोधिसत्त्वहरुका रुपमा सम्मान गरिन्छन् । धार्मिक समारोह तथा विवाहको उत्सवमा नेवारी बौद्धहरुले उनीहरुलाई प्रतिष्ठित अतिथिका रुपमा आमन्त्रण गर्छन् र आर्शीवाद प्राप्त गर्छन् ।

केही वर्ष वितिसकेपछि, ठकूरी बंशकै भलिभारद नाम गरेका व्यक्तिले अति दरिद्र भएर गाईको गोबर जम्मा पार्ने जस्तो नीच काम पनि गर्नु पऱ्यो । उसले गोबर संग्रह गरेर आफ्नो भन्डारमा जम्मा पार्न थाल्यो । आफ्नो दरिद्रताको कारणले गर्दा आफ्नी पत्नीलाई समेत आफूले गोबर भण्डारमा संग्रह गरेको कुरा बताउन लाज मान्थ्यो । आफ्नी पत्नीले त्यो गोबर देख्लिन कि भन्ने डरले गर्दा उसले भन्डारको साँचो लुकाइदियो । एकपल्ट उसले साँचो लुकाउन बिर्स्यो र उसकी पत्नीले त्यो साँचो जमीनमा परिरहेको पाई । कौतुहलतावश उसले भन्डार खोली र सबै गोबर सुनको रुपमा पाई । पति नदी तटबाट फर्कनासाथ आफूले भन्डार मा सुन फेला परेको कुरा सुनाई । र उसको भन्डारमा यत्तिका सुन संग्रहित छन् भन्ने कुरा सोचेकी पनि थिइन भनी आफ्नो पतिलाई भनी । यतिका धन हुँदा हुँदै किन यस्तो दु:ख कष्ट झेल्नु परेको भनी सोधी ।

अत्यन्तै प्रशन्न भएर उसले आफ्नी पत्नीलाई भन्यो, "हे प्रिय! त्रिरत्नको आशीषले गर्दाखेरी हामीले यतिका धेरै धन प्राप्त गरेका हौं । हाम्रै विगत कूकर्मको फलस्वरुप हामीले धेरै नै दु:ख भोग्नु पऱ्यो । त्यही प्रकारले हाम्रो विगतका केही दानपुण्यको कारणले आज हामीले यत्तिका धनको मालिक बन्न पुगेका छौं । तसर्थ, यो जुनी र अर्को जुनीमा कल्याण गर्ने धर्ममूलप्रति हामीले श्रद्धा स्थापित गर्नुपर्छ । कस्तो प्रकारको धर्म हामी मान्ने त? निर्णय गरौं । त्यसपछि उसकी पत्नीले विष्णुको धर्म मानौं न भनी प्रस्ताव गरी र त्यसैको लागि पैसा खर्च गरौं भनी सुझाव दिई । अर्को तर्फ पति चाहिँले बुद्धधर्म मान्न चाह्यो किनभने त्यो धर्म पुस्तौ देखि चलिआएको धर्म थियो । तर उसकी पत्नी अटल थिई । पतिले आफ्नो निणर्यप्रति अटल हुन उचित ठानेन किनकी यसले गर्दा उनीहरुको दाम्पत्य जीवनमा झगडा र कलह उत्पन्न गराउनेछ ।

त्यसैले यो समस्या समाधान गर्नको लागि उसले एउटा योजना बनायो । विष्णु र बौद्ध दुवै धर्मको गुण जाँच गर्ने एउटा प्रस्ताव पतिले राख्यो । विष्णु र बौद्ध धर्मका दुई विरुवाहरुमध्ये जुन विरुवा पहिले उम्रन्छ त्यही धर्म मान्ने कुरामा दुवैले सहमति जनाए । अत: बौद्ध धर्मको लागि उनीहरुले कपूरको विरुवा रोजे र विष्णु धर्मको लागि तुलसीको विरुवा रोजे । दुवै विरुवा उनीहरुले एकैसाथ रोपे । केही समय पछि, ती दुइ दम्पतिले कपूरको विरुवा पहिले उम्रेको देखे र तसर्थ दुवैले बौद्ध धर्म अंगाल्ने निधो गरे ।

यस समय उपरान्त उनीहरुले सम्यकगुठी नामक एउटा गुठी गठन गरे । यस गुठी अन्तर्गत समितिले पाटनका विभिन्न विहारहरुमा रहेका दिपंकरका प्रतिमाहरु, आर्य ताराका प्रतिमाहरु, र चैलक, श्रामणेर, ब्रम्हचर्या भिक्षु, शाक्य भिक्षु, बज्राचार्य इत्यादिहरुलाई आमन्त्रण गर्नुपर्थ्यो ।

यस अवसरको लागि विशेष तिथि फाल्गुण शुक्ल तृतिया हो । यस तिथिको साँझ, समितिका ठूला बडा सदस्यहरुले उचित आदरका साथ सवै आर्मन्त्रित देवी देवता

स्वागत गरेर दीप चढाउनु पर्छ। भोलिपल्ट, सबै आमन्त्रित बुद्ध प्रतिमा, बोधिसत्त्व तथा ताराहरुलाई सम्यक दान गर्नुपर्छ। यस उत्सवमा धेरै श्रोत तथा मानिसहरु चाहिने हुनाले भलिभारदले यस पवित्र उत्सवलाई जगेर्ना गर्न एक ठूलो जायजेथा र धन दान दिएको थियो। बंशावलीका अनुसार, अपरिहार्य कारणहरुले गर्दा यस पर्वलाई हरेक वर्ष समितिले मनाउन सकेन। हिरण्यवर्ण महाविहारका बौद्ध संघले यस उत्सवलाई हरेक चार वर्षमा मनाउन सफल भयो। यो अद्यापि चलिरहकै छ।

## ऐतिहाँसिक पृष्ठभूमि

दीपंकर मूर्तिको सवैभन्दा पहिलो अभिलिखित प्रमाण पण्डित हेम राज शाक्यको संकलनमा रहेको ताडपत्र (मिति: ने.सं. ५६५ अर्थात १३४५ ई.सं) मा भेट्टिएको छ। त्यस ताडपत्रमा उल्लेख भए अनुसार दाता जय राज भारोले श्री पुलाचो महाविहार का ब्रम्हचर्या भिक्षु श्री अखयश्री थपाजुबाट सापटि लिएको सुनले दीपंकर बुद्धको प्रतिमामा जलप गरेको थियो।

अनि यस उत्सवको प्रमाण चाहिं दीपंकर विहारमा फेला पारिएको ने.स ५९६ अर्थात ई.सं. १४७६ ताकाको अर्को ताडपत्रमा उल्लेखित छ जस अनुसार हिरण्यवर्णमहाविहारका शाक्यभिक्षुले सम्यक भोजनको लागि भक्तपुरस्थित दीपंकर विहारका दश स्थविर वा आजुहरुलाई निम्तो दिएका थिए।

पण्डित हेमराजकै संग्रहमा रहेको अर्को ताडपत्र (तिथि: ने.सं.५९९ अर्थात १४७९ ई.सं०) मा निम्तो पत्रको वर्णन पाइन्छ जस अनुसार सम्यक उत्सवका आयोजकले त:वहालमा आयोजना गरिने सम्यक पर्वको लागि यम्पि महाविहारका भिक्षुहरुलाई निमन्त्रणा दिएको थियो।

अभिलेखहरु (केही पिण्डपात्रहरुमा उत्कीर्ण जम्मा १०२ अभिलेखहरु) मध्ये सवैभन्दा पुरानो अभिलेख ने.सं. ६४५ (ई.सं.१५२५) तिथिको पाइएको छ। त्यसमा उल्लेख भए अनुसार ई.सं. १५२५ साल, श्रावण शुक्ल अष्टमी विहिवारको दिन, श्री

हर्षसिंहकी पत्नी न्याखाचोक विहारबाट आएकी आफ्ना छोरा छोरीहरुका साथमा हेरास्मीले यो पिण्डपात्र दीपंकर तथागतहरु र सर्व संघलाई चढाएकी थिइन् र यो दानको पुण्यफलस्वरुप सुख र समृद्धिको कामना गरेकी थिइन् ।

पुन: नकवहिल टोलका भायोजु पञ्चदान गुठीमा सुरक्षित एक तालपत्र (ने.सं.७७१) मा श्री देवरथन शाक्यभिक्षुजुले दीपंकर बुद्धको प्रतिमा प्रतिष्ठापन गरी सम्यक महादान गरेको उल्लेख पाइन्छ ।

यस्तै अर्को एउटा अभिलेखमा उल्लेख भए अनुसार नकबहिलका एकजना भिक्षुले ने.स. ८३९ (ई.सं. १७१९) माघ महिनामा हिरण्यवर्ण महाविहारमा आयोजित एक विशेष सम्यक भोजनमा उपस्थित हुनको लागि राजा महेन्द्र सिंह (ने.सं. ८३७–ने.सं. ८४३) लाई निम्तो पठाएको थियो । यी सबै बाहेक अहिलेसम्म यस सम्यक उत्सवको प्राचीन ईतिहासलाई पुस्टि गर्नको लागि अरु कुनै अभिलेखहरु भेट्टिएका छैनन् ।

## दीपंकर उत्सवमा प्रदर्शित गरिने देवी देवताहरुको सूची

१. स्वयम्भू चैत्य
२. वज्रसत्त्व प्रतिमा
३. वज्रसत्त्व मुकूट
४. भेगो आजु
५. क्वजी आजु
६. वसुन्धरा
७. आदिनाथ करुणामय
८. बुङ्गम्द्य लोकेश्वर
९. चासं द्य
१०. निमनाथ लोकेश्वर
११. लगंखेल स्तूपको प्रतिमूर्ति
१२. तङ्गबहा आर्य तारा
१३. तङ्गबहा दीपंकर
१४. कोबहाल दीपंकर
१५. धुम्बहा दीपंकर
१६. धुम्बहा आर्यतारा
१७. चुकबहा दीपंकर
१८. कुलिम्बहा दीपंकर
१९. क्वाबहा दीपंकर र भलिभारो
२०. बहापा देव
२१. वम्बहा दीपंकर

२२. दौबहा दीपंकर
२३. त:बहा दीपंकर
२४. बु:बहा दीपंकर
२५. ह:बहा दीपंकर
२६. ज्यो:बहा दीपंकर
२७. गुजिबहा दीपंकर
२८. गुजिबहा बुङ्गम्ह लोकेश्वर
२९. भिन्छेबहा दीपंकर
३०. उकुबहा दीपंकर
३१. सु:बहा दीपंकर
३२. सु:बहा तारा
३३. यच्छुबहा दीपंकर
३४. यच्छुबहा तारा
३५. कीर्तिपुर दीपंकर
३६. कीर्तिपुर तारा
३७. जतिबहा दीपंकर
३८. जतिबहा तारा
३९. आदिनाथ लोकेश्वर
४०. कीर्तिपुर दीपंकर
४१. कीर्तिपुर तारा
४२. जदेबहा तारा
४३. कीर्तिपुर तारा
४४. उकुबहा तारा
४५. उकुबहा तारा
४६. भिन्छेबहा तारा
४७. गुजिबहा तारा
४८. गुहिबहा तारा
४९. ज्योबहा तारा
५०. ज्योबहा तारा
५१. ह:बहा तारा
५२. ह:बहा तारा
५३. बु:बहा तारा
५४. बु:बहा तारा
५५. त:बहा तारा
५६. त:बहा दीपकर
५७. त:बहा तारा
५८. दौबहा तारा
५९. वम्बहा तारा
६०. मिच्छुबहा देव
६१. ज: जयेमा दीपंकर
६२. यत्बहा दीपंकर
६३. दारिकाबहा दीपंकर
६४. इखाछे बहा दीपंकर
६५. चुक:बहा तारा
६६. चुक:बहा दीपंकर
६७. चुक:बहा तारा
६८. आनन्दबहा दीपंकर
६९. मिखाबहा तारा
७०. अकिबहा दीपंकर
७१. अथ:बहा दीपकर
७२. मु:बहा दीपकर
७३. चिलंदेव
७४. थ्याका तारा
७५. न्याखाचोक तारा
७६. मैत्रीध्वज कमल आजु र तारा

७७. ह्लिला आजु र ताजफ तारा
७८. बम्बहा दीपकर: कुं आजु
७९. हौग दीपंकर
८०. हौग तारा
८१. चापागाउ दीपंकर
८२. चापागाउ तारा
८३. बुबहा दीपंकर
८४. बुबहा तारा
८५. सिबहा दीपंकर
८६. सिबहा कचाबहा दीपंकर
८७. सिबहा कचाबहा तारा
८८. सिबहा दीपंकर
८९. दिपंकर: भायो आजु
९०. तारा
९१. मुबहा दीपंकर
९२. मुबहा तारा
९३. चिबहाचुक तारा
९४. भिक्षु आजु
९५. इबही–थासंघ दीपंकर
९६. भिन्छेबहा दीपंकर
९७. भिन्छेबहा तारा
९८. सुबहा दीपंकर
९९. सुबहा तारा
१००. थकुबहा दीपंकर
१०१. थकुबहा तारा
१०२. इलाबही दीपंकर
१०३. इलाबही तारा
१०४. धुन्बहा दीपंकर
१०५. धुन्बहा तारा
१०६. त:बहा दीपंकर
१०७. कामी आजु यट्बहा
१०८. धर्मशीला आजु
१०९. भानसी आजु
११०. दीपंकर मुनिधन (धाख्वा)
१११. तारा (धाख्वा)
११२. दिनपानी आजु
११३. धर्मध्वज आजु र तारा
११४. धुस तारा
११५. गजेन्द्रध्वज तारा
११६. दानमुनि धाख्वा तारा
११७. बागनर्सि तारा इकु
११८. साखति जयेमा
११९. जोग आजु ह:बहा
१२०. क्वाबहा नापित दीपंकर
१२१. चिकंबही–धनद् दीपंकर

# Samyak Festival

Hiranya Varna Mahavihara

(English Version)

*By:*

Min Bahadur Shakya

*Published by:*

Kaji Ratna Shakya

Asha Ratna Shakya

Gyan Ratna Shakya

Mani Ratna Shakya

# DIPANKARA FESTIVAL

## Introduction*:

Of all the Buddhist festivals of the Kathmandu Valley, the Samyek or Dipamkara festival seems to be unique in many senses. The special feature of this festival is that the large Dipamkara Images are displayed in the main square of Nagabahal Courtyard.
The literal meaning of the word 'Samyek' is the oneness of all sentient being. In history of Buddhism we know three forms of enlightenment namely Sravaka bodhi, Pratyeka Bodhi and Samyeka Sambodhi. In this context Samyek stands for Perfect and Sambodhi for Enlightenment. Here the Samyek festival denotes the practices leading to Perfect Enlightenment namely the path of Bodhisattvas leading to Samyek Sambodhi.
The essence of this festival is the practice of Giving Danaparamita to monks ( Sakyas and Vajracharyas according to Newar Buddhist Tradition ) and to Buddhas especially to Dipankara Buddha with whom Lord Shakyamuni Buddha received prediction of his future Buddhahood in his previous life times and Bodhisattva Avalokiteshvara, Arya Taras and so forth.

Furthermore, Sakyas and Vajracharyas are said to be householder bodhisattva monks receiving alms and dana from lay upasaka and upasikas. Often those who give dana or make offerings are referred to simply as *bhaktajana* or devotees.

## Legends on the origin of Dipankara Festival

In the medieval period about 14th century the descendants of king Bhaskaradeva Varma(1045-1048AD) who founded the Golden Temple or Hiranyavarna Mahavihara, established a religious trust in which the sponsors used to honor ten Elders who were the embodiment of Bodhisattvas who had actualized ten perfections

***Based on Pt. Hem Raj's treatise namely Samyek Festival in Nagbahal, Great Samyek Offering Trust, and History of Ilhane Samyek and its functions (titles of all three books are translated here).**

with due respect and ceremony. One of those descendants married a lady from Bhaktapur belonging to Thakuri dynasty. While the donor was observing this Trust he invited the father- in- law of his son and fed him with due respect and honor.
During the ceremony the in-laws carefully observed all the rituals and performances except for one special secret ceremony. At this he was not satisfied at all for he was not shown that secret ritual. Once when the son was invited to Bhaktapur for a dinner at his in-laws, he was asked about this secret ritual. Next time the son invited his father in law and showed the secret ritual in which Ten Elders were offered milk rice.The father in law with evil intention put poison in milk rice secretly and offered to Ten elders. The Ten elders knowing the evil intention of the guest from Bhaktapur chanted the *dharani* called "Purification of poison" and ate the food completely as if the food is normal.

As a result of Dharani recitation they were unaffected and in return the man from Bhaktapur experienced deadly suffering as a result of poison even if he did not partook of it. After consulting with astrologers it was reported that it was the karmic effect from the part of the one who put poison in the food and it can be recovered only when he confess to those Ten elders. The man who poisoned confessed accordingly and then Ten Elders instructed the donors and sponsors present therein.

" O devotees! Evil is growing in this world, your father in law without any mistake from our part committed great crime with evil intention and hence suffered as a result of his own action."

Thus they sprinkled some holy water on the sinner and cured him in an instant out of power of bodhicitta motivation of Ten Elders.

Confessing his grievous fault the sinner asked for their forgiveness and committed that he would not give suffering to any body in the future. He praised the power of great compassion of Ten Elders.

Then Ten Elders said, ' O Man of Nhola Vihara of Thakuri Dynasty! From now on we won't be able to come to this world in person again and again, we will appear in the form of these Ten Elders (Dasaparamita Ajus). Please have faith and respect on these elders as if they were bodhisattvas of ten perfections. You will receive equal benefits and merits and finally achieve ultimate happiness." Thus saying they disappeared. Because of this unusual event happened in the past the Ten Elders are honored till today as Bodhisattvas of ten perfections. Newar Buddhists used to invite them as honored guests in their religious ceremonies as well as Wedding ceremonies to receive blessing from them.

After the lapse of several years, a man called Bhalibharad from Thakuri Dynasty witnessed a severe poverty and had to do a menial job of collecting cowdung. He begun to collect cow dung and deposited in his storeroom. Because of his extreme poverty he could not venture to tell his own wife that he was storing cow dung as his treasure in the storeroom. He was worried about seeing cow dung by her so he hid the key. Once he forgot to hide the key and his wife found it lying on the ground. Out of curiosity she opened the store and found all the cow dung as gold. As he came back from the river he was informed about the discovery of gold in his storeroom. His wife told him that she had never expected her husband had such a vast amount of gold stored in his treasure room. She asked why did he suffer so much in spite of his tremendous wealth.

With great happy mood he told his wife," O my beloved wife! With the blessings of Triple Jewels we received vast amount of wealth. We suffered a lot because of our past non- virtuous actions and similarly we received this vast wealth due to our some actions of generosity.Therefore, we should now establish a Trust for the cause of dharma which brings forth benefit both for this life and the lives to come. What kind of dharma do we follow? Let us decide. Then his wife proposed to follow religion of Vishnu and suggested to expend the money for the same. On the other hand her husband preferred to follow the religion of Buddha because

it was handed down through generation to generation. But his wife decision was firm. It was not proper for him to stick to his stand for this might bring quarrel and harmful to his conjugal life.
So he devised a plan to solve this problem. He suggested a proposal to examine the qualities of both the religions namely Vaisnavaite or Buddhism. Both of them accepted that whichever plant sprouts first they would accept the same religion. So they marked *Camphor* flower for Buddhism and *Tulsi* flower for Vaisnavism.So they planted both of these plants.After some time the couple saw the camphor sprouting first thereby they decided to follow Buddha's religion.

From this time onwards they established a trust called *Samyakguthi* in this Trust the committee has to invite all the Dipankara images residing in different viharas of Patan, the images of Arya Tara, and Buddhist Sangha including Chailaka, Shramanera, Brahmcarya bhikshu, Shakya bhikshu , Vajracharyas and so forth.

The special date for this event is Falgun Sukla Tritiya i.e on the 3rd day of Falgun of waxing moon.On the evening of this date the committee elders has to perform reception with due respect to all the invited deities and offer the lamps. Then next day one has to make a offerings (Samyekdana) to all the invited Buddha images, Bodhisattvas and Taras. Since the event involved a lot of resources and manpower Bhalibharad donated a large estate, and money to sustain this holy event. According to the chronicle, the committee could not continue every year because of unavoidable circumstances. The Buddhist Sangha of Hiranyavarna Mahavihara managed to conduct this event every four year. This is continuing till today. Thanks to the organizer of this Samyek Festival who managed to sustain it

## Historical Background

The earliest documentary evidence of Dipankara image is found in a palm leaf document (dated 565 N.S. i.e 1345 A.D) belonging

to Pandit Hem Raj Shakya which mentions that the donor Jaya Raja Bharo gilded a Dipankara Buddha image with gold lent from Brahmacarya bhikshu sri Akhayasri Thapaju from Sripulacho Mahavihara.
And the evidence of this festival is found in another palm leaf document found in Dipankara Vihara dated 596 NS i.e. 1476 A.D. in which the Sakyabhikshus of Hiranyavarna Mahavihara had sent an invitation to Ten elders of Dipankara vihara of Bhaktapur for a Samyek feast.

Another palm leaf document (dated 599 NS i.e1479 A.D belonging to Pandit Hem Raj Shakya's collection describes an invitation letter in which the Samyek festival organizer invites the bhikshus of Yampi Mahavihara for a Samyek feasting to be held in Tahbahal.

Among the inscriptions (102 in number found in the several alms bowl ( pindapatra) the most ancient one is dated 645 NS (1525A.D).It says In 1525 A.D, in the month of Sravan Sukla astami on Thursday, Sri Harshasimha's wife Herasmi together with sons and daughter who hailed from Nyakhachowk vihara offered this alms bowl to Dipamkara Tathagatas and Sarva Sangha and wished happiness and prosperity from the merits of this generosity.

Another important palm leaf document (N.S.771 i.e. 1551 A.D.) gives an account of celebration of Samyak festival and the establishment of Dipankara Buddha image by Shakya Bhiksu Deva Rathan.

In an another document a bhikshu of Nakabahil sent an invitation to King Mahendra Singha (837-843 NS) to attend a special feast

